# लागुऔषध नियन्त्रण रणनीति, २०६६

## १. परिचय

विश्वव्यापी साझा समस्याको रुपमा रही आएको लागुऔषधको प्रयोग नेपालमा पनि समस्याको रुपमा देखा परेको छ । नेपालमा मदिरा, सुर्तिजन्य पदार्थ एवं गाँजा चरेसको प्रयोग पनि दिनानुदिन बढ्दै गएको छ । हेरोइन तथा अफिम जस्ता लागुपदार्थको प्रयोगले यो समस्यालाई अझ बढाएको छ । हालका दिनहरुमा सुईको माध्यमबाट लागुपदार्थको प्रयोग क्रम पनि बढ्दै गएको छ । यसमा लागुऔषधयुक्त सुई औषधी (Injecting Drugs) तथा सिन्थेसाइज्ड केमिकलहरु (Synthesized Chemicals) समेत लागुऔषधको रूपमा प्रयोग हुनुले समस्या अझै बढ्ने क्रम जारी छ ।

एक सर्वेक्षणका अनुसार नेपालमा कडाखाले लागुऔषध प्रयोगकर्ता (Hard Drugs Users) को संख्या ४६ हजार भन्दा बढी देखिएको छ । यी मध्ये सबैभन्दा बढी काठमाडौं उपत्यका र त्यसपछि पोखरा तथा झापामा छन् । यसको साथै विराटनगर, वीरगञ्ज, धरान, बुटवल, नेपालगञ्ज जस्ता शहरी क्षेत्र लगायत अन्य विभिन्न शहरी तथा शहर उन्मुख क्षेत्रहरुमा समेत यस्ता लागुऔषध प्रयोगकर्ताको संख्या क्रमश : वढदै गएको पाइएको छ ।

लागुऔषधको प्रयोग विशेष गरी किशोर किशोरीहरुमा बढी देखिएको छ । प्राप्त तथ्याङ्क अनुसार लागुऔषध प्रयोगकर्ता मध्ये करिव तीन चौथाई संख्या विस वर्ष भन्दा कम उमेर समूहको छ । यसैगरी करिव एकसट्ठी प्रतिशतले सुइको माध्यमबाट लागुऔषधको प्रयोग गर्नेगरेको देखिन्छ भने यी मध्ये उनन्तीस प्रतिशतले एक आपसमा सुई साटासाटको माध्यमबाट यस्ता औषधी प्रयोग गरेको देखिन्छ । यसरी असुरक्षित सुईको प्रयोगबाट एच्.आई.भी., हेपाटाईटिस वी/सी तथा अन्य रगतजन्य रोगहरु सर्नसक्ने खतरा अध्ययनले देखाएको छ । यसका अतिरिक्त लागुऔषधको प्रयोगकर्ताबाट हुने असुरक्षीत यौन सम्पर्कले पनि माथि उल्लेखित रोगहरु बढाउन थप मद्दत पुग्ने अनुसन्धानले देखाएको छ ।

लागुपदार्थको अवैध ओसार-पसार एवं कारोवारलाई हातहतियार तस्करी पछिको दोस्रो ठूलो अपराधको रुपमा लिइन्छ । यसको अवैध ओसार-पसार एवं नियन्त्रण गर्न कानून कार्यान्वयन निकायहरु क्रियाशील रहे पनि अन्तर्राष्ट्रिय रुपमा संगठित र सक्रिय गिरोहको संजालले गर्दा यसको ओसार-पसार र नियन्त्रण गर्ने कार्य चुनौतीको रुपमा देखिएको छ । नेपाल लागुपदार्थ उत्पादन र ओसार-पसार गर्ने गोल्डेन

ट्रयाङ्गल र गोल्डेन क्रिसेन्टको नजिक पर्ने हुँदा यहाँको भूमिलाई लागुपदार्थ ओसार पसार गर्ने सहज बाटोको रुपमा प्रयोग गर्ने गरेको पाइन्छ ।

लागुऔषध प्रयोगकर्तालाई थप जोखिममा पर्न नदिइ उनीहरुलाई आवश्यक उपचार सेवा प्रदान गरी समाजमा पुनःस्थापना गराउने सरकारी नीति छ । यसको लागि लागुऔषध प्रयोगकर्तालाई दुर्व्यसनीको रुपमा हेर्ने विद्यमान सामाजिक सोच र प्रवृत्तिमा आमूल परिवर्तन आवश्यक छ । लागुऔषध प्रयोगकर्तामाथि मानवीय व्यवहार र उनीहरुको मानव अधिकारको सम्मान पनि त्यत्तिकै आवश्यक छ । यसको साथै उनीहरुको उपचारलाई सार्वजनिक सरोकार (Public Health Concern ) को रुपमा लिनुपर्ने खाँचो पनि उत्तिकै देखिएको छ । गुणस्तरीय र भरपर्दो उपचार तथा पुनःस्थापना सेवामा लागुऔषध प्रयोगकर्ताहरुको पहुँच वढाउन पनि उत्तिकै जरुरी छ । यसको लागि लागुऔषध प्रयोगकर्तालाई आधारभूत स्वास्थ्य सेवा प्रदान गर्न छुट्टै संयन्त्र र सञ्चालन सेवाको खाँचो क्रमशःबढ्दै गएको छ ।

लागुऔषध दुर्व्यसन रहित स्वस्थ र समुन्नत समाजको प्राप्तीको लागि लागुऔषध नियन्त्रण राष्ट्रिय नीति, २०६३ लागु भैसकेको छ । लागु पदार्थको अवैध ओसार-पसार, कारोवार एवं आपूर्तिमा कडाईका साथ नियन्त्रण (Supply Control) गरी यससँग सम्बन्धित अपराधमा कमी ल्याउन विभिन्न नियन्त्रणमुखी कार्यक्रमहरु सञ्चालन गर्नु पनि उत्तिकै जरुरी छ । यसैगरी लागुपदार्थको अवैध खेती एवं ओसार पसारलाई निरुत्साहित गर्न विभिन्न दवावमूलक कार्यक्रमका साथै सो सँग सम्बन्धित सचेतनामूलक कार्यक्रमलाई प्रभावकारी तुल्याउनु आवश्यक देखिन्छ ।

लागुऔषधको प्रयोगबाट जोखिममा परेका समूहहरुको पहिचान गरी त्यस्ता समूह लक्षित समुदायमा आधारित विभिन्न कार्यक्रमहरु सञ्चालन गरी लागुपदार्थको माग घटाउ (Demand Reduction ) अभियानलाई थप प्रभावकारी बनाउनु जरुरी छ । साथै लागुऔषध प्रयोगकर्ताको क्षति न्यूनीकरणको लागि पनि समुदायमा आधारित विभिन्न गैरसरकारी संस्थाहरुसँग मिलेर कार्यक्रमहरु सञ्चालन गर्नु समेत उत्तिकै आवश्यक छ । खास गरी लागुऔषधको जोखिममा परेका महिला तथा युवाहरुलाई लक्षित गरी उपचार तथा पुनःस्थापनाका सघन कार्यक्रमहरु गर्न सकिएमा पनि लागुऔषधको माग घटाउ अभियानमा उल्लेख्य सहयोग पुग्ने देखिन्छ ।

खासगरी लागुऔषधको प्रयोग, रोकथाम तथा नियन्त्रण (Prevention & Control) को विषय सर्व सम्बन्धित (Cross Cutting) विषय हो । राज्यको एक्लो प्रयासबाट मात्रै यसको उचित व्यवस्थापन

गर्न कठीन हुन्छ । यसका लागि सरकारी तथा गैरसरकारी पक्ष, नागरिक समाज, नीजि क्षेत्र, विज्ञ एवं प्रयोगकर्ता तथा अन्तर्राष्ट्रिय विकास साझेदारहरुको संयुक्त सहकार्यको पनि त्यत्तिकै खाँचो पर्छ । यही मान्यताका आधारमा माथि उल्लेखित पक्षहरु वीच पटक पटक छलफल, कार्यशाला गोष्ठी तथा परामर्शमा गृह मन्त्रालयबाट सघन रुपमा परिष्कृत गरी यो रणनीति तयार पारिएको हो । अतः लागुऔषध नियन्त्रण राष्ट्रिय नीति,२०६३ ले लक्षित गरेका उद्देश्यहरु यो रणनीतिको कार्यान्वयनबाट पूरा हुने अपेक्षा गरिएको छ ।

## २. रणनीतिको दीर्घकालीन सोच (Vision)

लागुऔषध नियन्त्रण राष्ट्रिय नीति, २०६३ ले परिलक्षित गरेको "लागुऔषध रहित स्वस्थ र समुन्नत समाजको प्राप्ति" नै यस रणनीतिको दीर्घकालीन सोच हुनेछ ।

## ३. रणनीतिको दीर्घकालीन लक्ष्य (Mission)

"लागुऔषध दुर्व्यसन रहित स्वस्थ र समुन्नत समाजको प्राप्ति" का लागि आर्थिक, सामाजिक, सांस्कृतिक पक्षमा वहुआयामिक कार्यक्रम सञ्चालन गरी लागुऔषध दुर्व्यसन रहित समाजको सिर्जना गर्ने यस रणनीतिको दीर्घकालीन लक्ष्य हुनेछ ।

## ४. रणनीतिका उद्देश्यहरु (Objectives)

१ लागुऔषधको अवैध खेती, उत्पादन, ओसार-पसार र बेचविखनमा नियन्त्रण गरी यससँग सम्बन्धित अपराधमा कमी ल्याउने ।

२ जोखिम समूहमा लागुऔषधको प्रयोग (Incidence of Drug Abuse) लाई न्यूनीकरण गर्ने ।

३. गुणस्तरीय, भरपर्दो एवं विश्वसनीय उपचार तथा पुनःस्थापन सेवामा लागुऔषध प्रयोगकर्ताहरुको सहज तथा सरल पहुँच बढाउने ।

४ लागुऔषध प्रयोगकर्ता, निजको परिवार र समुदायमा एच.आइ.भी., हेपाटाइटिस, बी/सी, तथा यौनजन्य रोग जस्ता संक्रमणको जोखिम न्यूनीकरण गर्ने ।

५ लागुऔषधको प्रयोगमा रोकथाम तथा नियन्त्रणसँग प्रत्यक्ष एवं परोक्ष रुपमा सरोकार राख्ने विभिन्न नीतिहरु वीच तादात्म्यता कायम गरी विभिन्न निकायहरु वीच सहकार्य र साझेदारी प्रवर्द्धन गर्ने ।

६ लागुऔषध प्रयोगकर्ताको संख्या, स्वरुप तथा असर वारे आवधिक तथा आधारभूत सर्भेक्षण गर्ने ।

## ५. कार्यमूलक उद्देश्य तथा कार्यक्रम

***उद्देश्य १*** **- लागुऔषधको अवैध खेती, उत्पादन, ओसार-पसार र बेचविखनमा नियन्त्रण गरी यससँग सम्बन्धित अपराधमा कमी ल्याउने**

**कार्यक्रम**

१.१ गाँजा एवं अफिमको प्राकृतिक उत्पादन तथा त्यस्ता वस्तुको अवैध खेती हुने स्थानहरुको पहिचान गरी त्यसको विस्तारित इलाका र औसत वार्षिक उत्पादन बारे आधारभूत सर्वेक्षण गरी तथ्याङ्क संकलन गर्ने ।

१.२ लागुऔषधको ओसार-पसार तथा अवैध खेतीलाई निरुत्साहित गर्न चेतनामूलक जागरण कार्यक्रमहरु सञ्चालन गर्ने ।

१.३ गाँजा अफिम जस्ता लागुऔषध खेती विस्थापनका लागि प्रभावित क्षेत्रमा वैकल्पिक खेती लगायतका अन्य आय आर्जनका कार्यक्रम सञ्चालन गर्ने ।

१.४ गाँजा, अफिम जस्ता लागुऔषधको खेती र हिरोइन, चरेस, स्म्याक जस्ता लागुपदार्थको उत्पादन, ओसार-पसार तथा सञ्चयको नियन्त्रण गर्न आवश्यक कानूनी उपायहरु अवलम्वन गर्ने ।

१.५ सरकार, समुदाय एवं सरोकारवालाको संयुक्त प्रयासबाट प्राकृतिक रुपमा उम्रने लागुऔषध नष्ट गर्ने ।

१.६ लागुऔषध नियन्त्रणका लागि भएका क्षेत्रीय तथा अन्तर्राष्ट्रिय महासन्धिहरुको प्रभावकारी कार्यान्वयन गर्ने ।

१.७ लागुऔषधको अवैध ओसार-पसार र उत्पादनको प्रभावकारी नियन्त्रणका लागि क्षेत्रीय तथा अन्तर्राष्ट्रिय सहयोगको विस्तार गर्न द्विपक्षीय तथा बहुपक्षीय कानूनी सहयोग सम्वन्धी सम्झौता, सहकार्य र सूचना आदान-प्रदानलाई सुदृढ बनाउने ।

१.८ सहायक रसायन (Precursor Chemical) लाई कडाईका साथ नियन्त्रण गर्ने ।

१.९ लागुऔषधको अवैध खेती, उत्पादन, ओसार-पसार र वेचविखन जस्ता क्रियाकलापहरुको नियन्त्रणमा सघाउ पुऱ्याउन स्थानीय स्तरमा दवाव समूह गठन गर्ने ।

१.१० उपर्युक्त क्रियाकलापहरुको कार्यान्वयनको नियमित अनुगमन गर्ने संयन्त्रको निर्माण गर्ने ।

१.११ लागुऔषध नियन्त्रणको समग्र कार्यलाई प्रभावकारी बनाउने राजनीतिक प्रतिबद्धता कायम गरिनुपर्ने ।

*उद्देश्य २* - **जोखिम समूहमा लागुऔषधको प्रयोग (Incidence of Drug Abuse) लाई न्यूनीकरण गर्ने ।**

कार्यक्रम

२.१ *लागुऔषध दुर्व्यसनको कारणले जोखिम समूहमा परेका युवा तथा अन्य समुदायको पहिचान गर्ने*

२.१.१ विद्यालय तथा कलेजस्तरका विद्यार्थीहरू, विभिन्न समुदायहरु जस्तै महिला यौनकर्मी, मजदूर, सडक बालबालिका, थुनुवा, कैदी, वन्दी, विस्थापित, आप्रवासी तथा जोखिम समूहमा रहेका युवा तथा अन्य त्यस्तै जोखिम समुदायको स्वेच्छिक स्वास्थ्य परीक्षण गरी लागुऔषध प्रयोग गरेको छ छैन भन्ने कुराको पहिचान गर्ने । यसका लागि आवश्यक पूर्वाधारको व्यवस्था मिलाउने ।

२.१.२ विद्यार्थीहरूको आचरण तथा व्यवहारको अनुगमन तथा परीक्षण गर्न विद्यालय तथा अभिभावकलाई अभिप्रेरित गर्ने ।

२.१.३ विद्यालयमा विद्यार्थीको शैक्षिक एवं अन्य क्रियाकलापको प्रगति विवरणलाई समेत जोखिम पहिचानको आधारका रुपमा प्रयोग गर्न सकिने गरी निर्देशिका तयार गर्ने ।

२.१.४ समुदायका किशोर किशोरीमा लागुऔषधको जोखिम पहिचान गर्न समुदायमा आधारित संस्थाहरुलाई परिचालन गर्ने ।

२.२. *विद्यालयमा आधारित सचेतना र जागरणमूलक कार्यक्रम सञ्चालन गर्ने*

२.२.१ विद्यार्थीहरुमा लागुऔषध विरूद्ध सचेतना र जागरण ल्याउन विद्यालयका शिक्षकहरुलाई तालिम प्रदान गर्ने ।

२.२.२ कक्षा ६ देखि माथिको विद्यालय पाठ्यक्रममा लागुऔषध सम्बन्धी विषयलाई समावेश गर्ने ।

२.२.३ आधुनिक सूचना प्रविधि, नाटक तथा चलचित्र, एवं अभिमुखीकरण कार्यक्रम व्यापक रुपमा सञ्चालन गर्ने ।

२.२.४ विद्यार्थीहरूको माझ लोकप्रीय व्यक्तित्वलाई रोलमोडेलको रुपमा परिचालन गरी सचेतना/जागरण बढाइने ।

२.२.५ खेलकूद तथा विभिन्न अतिरिक्त क्रियाकलापको सञ्चालनबाट विद्यार्थीहरूको क्षमता अभिवृद्धि गरी लागुऔषधबाट टाढा रहन आत्मबल बढाउने ।

२.२.६ बाल क्लब गठन गर्ने र त्यसमार्फत सूचना संजालको विकास गरी लागुऔषध विरूद्धको अभियानमा त्यस्ता क्लबहरूलाई परिचालन गर्ने । साथै विद्यालय प्रशासनसँगको सहकार्यमा विद्यार्थी अगुवाहरुलाई समेत लागुऔषध विरुद्धको अभियानमा परिचालन गर्ने ।

२.२.७ विद्यार्थीहरुका छाता संगठन अभिभावक संघ तथा सामुदायिक विद्यालयसँग सम्वन्धित संस्थाहरूलाई परिचालन गरी चेतनामूलक कार्यक्रम सञ्चालन गर्ने ।

२.२.८ विद्यार्थीहरु बीच लागुऔषध दुर्व्यसन विरुद्ध परामर्श कक्षाहरु सञ्चालन गर्ने ।

२.२.९ अभिभावक सचेतनामूलक कार्यक्रमहरू सञ्चालन गर्ने ।

२.३. *लागुऔषधको माग घटाउनका लागि समुदायमा आधारित कार्यक्रम सञ्चालन गर्ने*

२.३.१ महिला, अभिभावक तथा युवा समुदायलाई लक्षित गरी लागुऔषध सम्वन्धी सचेतनामूलक कार्यक्रम सञ्चालन गर्ने ।

२.३.२ आमा समूह, चेलीबेटी समूह, वाल क्लव, युवा क्लव, दवाव समूह लगायत अन्य समाजिक संघ संस्थाहरुलाई परिचालन गरी लागुऔषध विरुद्ध सचेतनामूलक कार्यक्रम सञ्चालन गर्ने ।

२.३.३ विभिन्न पेशागत समूहहरूलाई जनचेतनामूलक कार्यक्रममा प्रत्यक्ष रूपमा सहभागी गराउने ।

२.३.४ विभिन्न समुदायको कार्यस्थल (Work Place) मै सम्वन्धित निकायको समन्वयमा चेतनामूलक कार्यक्रमहरू सञ्चालन गर्ने ।

२.३.५ समुदायको सहयोग तथा समन्वयमा आश्रय केन्द्र (Drop-in Center) तथा वाह्य परामर्श (Outreach) कार्यक्रमहरू सञ्चालन गर्ने ।

२.३.६ दौंतरी शिक्षा (Peer Education) मार्फत लागुऔषध विरूद्ध चेतनामूलक कार्यक्रम सञ्चालन गर्ने ।

२.३.७ लागुऔषध प्रयोगकर्ताप्रति समुदाय तथा कानून कार्यान्वयन गर्ने निकायको दृष्टिकोणमा परिवर्तन ल्याउन आवश्यक अभिमुखीकरण/प्रशिक्षण कार्यक्रम सञ्चालन गर्ने ।

२.३.८ विद्यालय बाहिर रहेका बाल बालिकाहरुको लागि लागुऔषध दुर्व्यसन विरुद्धका सचेतनामूलक कार्यक्रम सञ्चालन गर्ने ।

२.४. *लागुऔषधको जोखिममा परेका महिला वर्गका लागि लक्षित कार्यक्रम सञ्चालन गर्ने*

२.४.१ विभिन्न संघ, संस्था, समूहसँगको समन्वय र सहयोगमा महिला लक्षित चेतनामूलक कार्यक्रम सञ्चालन गर्ने ।

२.४.२ यौनकर्मी महिलाहरूलाई लक्षित गरी स्वास्थ्यसम्वन्धी विविध चेतनामूलक कार्यक्रम र आवश्यकता अनुसार परामर्श तथा पुनर्स्थापन कार्यक्रम सञ्चालन गर्ने ।

२.४.३ महिलाविरुद्ध हिंसा र विभेदको अन्त्यका लागि सहकार्यात्मक रुपमा विभिन्न कार्यक्रम सञ्चालन गर्ने ।

२.४.४ समुदायमा आधारित संस्थाको लैंगिक सीप अभिबृद्धि गर्न अभिमुखीकरण तथा प्रशिक्षण प्रदान गर्ने ।

२.५ *कारागार लक्षित कार्यक्रमहरू सञ्चालन गर्ने*

२.५.१ नेपालका कारागारहरूलाई सुधारगृहको रूपमा लिई लागुऔषध सम्वन्धी विविध कार्यक्रम सञ्चालन गर्ने ।

२.५.२ नेपालका विभिन्न कारागारमा रहेका कैदी/वन्दीहरूलाई लागुऔषध तथा यसले पार्ने प्रतिकूल प्रभावका बारेमा सचेतनामूलक कार्यक्रम सञ्चालन गर्ने ।

२.५.३ कारागारभित्र विभिन्न योग, ध्यान शिविर तथा स्वास्थ्य शिविरहरु सञ्चालन गरी कैदी/वन्दीहरूको मनोसामाजिक (Psycho Social) धारणामा परिवर्तन ल्याउन विभिन्न कार्यक्रम सञ्चालन गर्ने ।

२.५.४ कारागारभित्र विभिन्न सीपमूलक तालिम तथा आय आर्जन हुने कार्यक्रम सञ्चालन गरी रोजगारीका अवसरमा विविधिकरण गर्ने ।

२.५.५ कैदी/वन्दीको मानसिक तथा शारीरिक विकासको लागि कारागारभित्र विभिन्न खेलकूद तथा सिर्जनशीलताको विकास हुने क्रियाकलापहरु सञ्चालन गर्ने ।

२.६. *सडक बालबालिका प्रति लक्षित कार्यक्रमहरू सञ्चालन गर्ने*

२.६.१ सडक बालबालिकाहरूलाई विभिन्न सडक नाटक, पर्चा पम्प्लेट, गीत संगीतको माध्यमबाट लागुऔषध विरूद्ध चेतनामूलक कार्यक्रम सञ्चालन गर्ने ।

२.६.२ गैरसरकारी संस्थासँगको सहकार्यमा सडक बालबालिकालाई समाजमा पुनर्स्थापना गर्न सघाउने क्रियाकलाप सञ्चालन गर्ने ।

२.६.३ सडक बालबालिकाहरूको संरक्षकत्व हासिल गर्ने कार्यमा विभिन्न व्यक्ति तथा संस्थाहरूलाई प्रोत्साहन गर्ने ।

२.७. *लागुऔषध विरूद्धको अभियानमा आमसंचारका माध्यमलाई परिचालन गर्ने र सूचना प्रवाहमा व्यापकता ल्याउने*

२.७.१ लागुऔषध विरूद्ध जनचेतना जगाउन आमसंचारकर्मीलाई अभिमुखीकरण गर्ने ।

२.७.२ लागुऔषधसम्वन्धी खोजमूलक पत्रकारितालाई प्रोत्साहित गर्ने ।

२.७.३ लागुऔषधसम्वन्धी सूचना प्रवाहमा सञ्चार माध्यमलाई परिचालन गर्ने ।

२.७.४ लागुऔषधसम्वन्धी चेतनामूलक सामग्री उत्पादन गर्न विभिन्न व्यक्ति तथा संस्थाहरूलाई प्रोत्साहन तथा सहयोग गर्ने ।

२.७.५ चलचित्रको माध्यमबाट लागुऔषधको जोखिममा परेका तथा पर्न सक्ने समुदायमा जागरणमूलक सूचना प्रवाह गर्न तथा व्यवहार परिवर्तन गर्न चलचित्रकर्मीलाई उपयोग गर्ने ।

२.७.६ लागुऔषध विरुद्धको अभियानमा उत्कृष्ट योगदान पुऱ्याउने साहित्य, संगित, श्रव्य-दृश्य सामग्री, कलाकर्मी, सञ्चारकर्मी तथा सञ्चार माध्यम समेतलाई पुरस्कृत/ प्रोत्साहित गर्ने ।

***<u>उद्देश्य ३</u>*** **गुणस्तरीय, भरपर्दो एवं विश्वसनीय उपचार तथा पुनर्स्थापन सेवामा लागुऔषध प्रयोगकर्ताहरुको पहुँच बढाउने**

**<u>कार्यक्रम</u>**

***३.१. गुणस्तरीय उपचारमा लागुऔषध प्रयोगकर्ताहरूको पहुँच सहज र सरल तुल्याउने***

३.१.१ लागुऔषध प्रयोगकर्तालाई आधारभूत स्वास्थ्य सेवा प्रदान गर्न अस्पतालहरुमा पूर्व लागुऔषध प्रयोगकर्ताहरुको समेत प्रतिनिधित्व हुने गरी आवश्यकता अनुसार छुट्टै संयन्त्र निर्माण गर्ने ।

३.१.२ विभिन्न अस्पतालहरूमा छुट्टै डिटक्सीफिकेशन यूनिट सञ्चालनको व्यवस्था गर्ने ।

३.१.३ आवश्यकतानुसार लागुऔषध प्रयोगकर्ताको उपचारको लागि अस्पतालहरूमा छुट्टै शैयाको व्यवस्था गर्ने ।

***३.२ पुनर्स्थापन केन्द्रको सञ्चालन गर्ने***

३.२.१ सरकारले नमूनाको रूपमा प्रत्येक विकास क्षेत्रमा क्रमशः एक/एक वटा उपचार तथा पुनर्स्थापना केन्द्र स्थापना गर्ने ।

३.२.२ पुनर्स्थापना केन्द्रको सञ्चालन सरकार वा गैरसरकारी संस्थाहरूसँगको समेत सहकार्यमा गर्ने ।

३.२.३ गैरसरकारी संस्था तथा समुदायमा आधारित संस्थाहरूलाई पुनःस्थापना केन्द्र सञ्चालनको लागि प्रोत्साहन दिने ।

३.२.४ पुनःस्थापना केन्द्र सञ्चालनको लागि आवश्यक मापदण्ड तोक्ने ।

३.२.५ पुनःस्थापना केन्द्र र केन्द्रबाट प्रदान गरिने सेवाहरुवारे जनसाधारणलाई सुसूचित गर्ने ।

३.२.६ पुनःस्थापना केन्द्रको अनुगमन र मूल्यांकनको कार्यलाई उच्च प्राथमिकता दिने ।

३.२.७ तोकिएको मापदण्ड अनुसार प्रभावकारी रूपमा सञ्चालन भएका पुनःस्थापना केन्द्रहरूलाई विशेष रुपले प्रोत्साहित गर्ने ।

३.२.८ पुनःस्थापना केन्द्र भित्र विभिन्न योग तथा ध्यान शिविरहरू सञ्चालन गरी पूर्व लागुऔषध प्रयोगकर्ताहरूको मानसिक अवस्था परिवर्तन गर्ने प्रयास गर्ने ।

३.२.९ पुनःस्थापन केन्द्रहरुमा गुणस्तरीय सेवा प्रदान गर्न आवश्यकता अनुसार राष्ट्रिय तथा अन्तर्राष्ट्रियस्तरको तालिमको व्यवस्था गर्ने ।

३.२.१० पुनःस्थापना केन्द्रहरुको संजालको व्यवस्था गर्ने ।

३.२.११ पुनःस्थापन तथा उपचार केन्द्रको गतिबिधि बारे नियमित अनुगमन एवं सुपरिवेक्षण गर्न स्थानीय प्रशासनको भूमिकालाई सक्रिय तुल्याउने ।

### ३.३. *सामाजिक पुनरएकीकरणका कार्यक्रम सञ्चालन गर्ने*

३.३.१ पुनरावृत्ति (Relapse) लाई कम गर्न सीप विकास, आय आर्जन, तथा उद्यमशीलताको विकास गर्न जीवनोपयोगी कार्यक्रमहरू सञ्चालन गर्ने ।

३.३.२ अभिभावक तथा पूर्व लागुऔषध प्रयोगकर्ताहरू बीच आपसी संजाल निर्माण गरी भेटघाट, छलफल तथा आपसी सम्वन्धको माध्यमबाट पुनरावृत्ति (Relapse) लाई कम गर्ने प्रयास गर्ने ।

३.३.३ लागुऔषध प्रयोगकर्ता तथा पूर्व प्रयोगकर्ताप्रति गरिने सामाजिक भेदभाव हटाउन परिवार र समुदायको सहभागितामा चेतनामूलक कार्यक्रमहरु सञ्चालन गर्ने ।

**उद्देश्य: ४ लागुऔषध प्रयोगकर्ता, निजको परिवार र समुदायमा एच.आइ.भी., हेपाटाइटिस, यौनजन्य रोग जस्ता संक्रमणको जोखिमलाई नियन्त्रण र न्यूनीकरण गर्ने**

कार्यक्रम

*४.१. मौखिक प्रतिस्थापन विधि*

४.१.१ मेथाडोन, बुप्रेनर्फिन लगायतका मौखिक प्रतिस्थापन उपचार पद्धतिको क्षमता अभिवृद्धि गरी आवश्यकतानुसार क्षेत्र बढाउँदै यो कार्यक्रम आवश्यकतानुसार कारागारहरूमा समेत विस्तार गर्ने ।

४.१.२ मौखिक प्रतिस्थापन विधि नेपाल सरकारबाट स्वीकृत सक्षम सरकारी तथा निजी अस्पताल एवं गैर सरकारी संस्था मार्फत सञ्चालन गर्ने । यो कार्यक्रमलाई बढी प्रभावकारी गराउनका लागि आवश्यक मनो-सामाजिक सहयोग पद्धति (Psycho Social Support System) को समेत व्यवस्था गर्ने ।

४.१.३ मौखिक प्रतिस्थापन कार्यक्रममा प्रयोग हुने औषधिहरुको आपूर्ति तथा गुणस्तरको व्यवस्थापन एवं अनुगमन स्वास्थ्य तथा जनसंख्या मन्त्रालय, औषधि व्यवस्था विभागसँगको समन्वयमा गर्ने ।

४.१.४ मौखिक प्रतिस्थापन उपचार पद्धतिको लागि आवश्यक तालिम प्राप्त जनशक्ति, न्यूनतम भौतिक तथा प्राविधिक सुविधाहरुको व्यवस्थापन गर्ने ।

४.१.५ मौखिक प्रतिस्थापन उपचार पद्धतिमा प्रयोग हुने औषधिहरु अवैधरुपमा वजारमा अपचलन हुन नदिनका लागि स्वास्थ्य तथा जनसंख्या मन्त्रालय

तथा कानून कार्यान्वयन निकायहरु वीच समन्वय गरी उपयुक्त नियन्त्रणको व्यवस्था मिलाउने ।

## *४.२. अन्य क्षति न्यूनीकरण कार्यक्रम सञ्चालन*

४.२.१ समुदायमा आधारित विस्तृत विस्तृत संलग्नता (Comprehensive Outreach) कार्यक्रम मार्फत सुरक्षित सुई, कण्डोम लगायतका साधनहरूको व्यवस्थापन गर्ने । साथै प्रयोग पश्चात् त्यस्ता साधनहरु सुरक्षित तवरले नष्ट गर्ने ।

४.२.२ आवश्यकताको आधार र समुदायको संलग्नतामा न्यूनतम मापदण्ड सहितका आश्रय केन्द्र (Drop in Center) को स्थापना गर्ने । आवश्यकतानुसार कारागार भित्र पनि यस्ता केन्द्रको विस्तार गर्ने ।

४.२.३ आश्रय केन्द्र (Drop in Center) मा रहने परामर्शदाता (Counseller) को व्यवसायिकता बृद्धिमा जोड दिने ।

४.२.४ स्वास्थ्य तथा जनसंख्या मन्त्रालय र राष्ट्रिय एड्स तथा यौन रोग नियन्त्रण केन्द्र (NCASC) को समन्वयमा स्वयम्सेवी परामर्श र परीक्षण (Voluntery Counselling and Testing, VCT) को स्थापनामा जोड दिने ।

४.२.५ सरोकारवालाको संलग्नतामा कार्यक्रमको प्रभावकारिता अभिवृद्धि गर्न तथा दोहोरोपन हटाउनको लागि अनुगमन तथा मूल्याङ्कनको व्यवस्था मिलाउने ।

४.२.६ कार्यक्रमको स्थायित्वको लागि संलग्न व्यक्तिहरूलाई तालिम तथा क्षमता अभिवृद्धिका अवसरहरू उपलब्ध गराउने ।

४.२.७ मौखिक प्रतिस्थापन उपचार पद्धतिको लागि आवश्यक मार्गदर्शन (Guidelines) र कार्य योजना निर्माण गर्ने ।

४.२.८ क्षति न्यूनीकरण (Harm Reduction) सम्बन्धी अन्य कार्यहरु स्वास्थ्य तथा जनसंख्या मन्त्रालयसँगको समन्वयमा सँग सँगै सञ्चालन गर्ने ।

## *४.३. महिला लागुऔषध प्रयोगकर्ताका लागि विशेष कार्यक्रम सञ्चालन*

४.३.१ मौखिक रूपमा वा सुई मार्फत् लागुऔषध प्रयोग गर्ने महिलाहरूका लागि चेतनामूलक कार्यक्रमहरू सञ्चालन गर्ने । यस्ता कार्यक्रमहरू कारागारभित्र समेत विस्तार गर्ने ।

४.३.२ महिला लागुऔषध प्रयोगकर्ताहरूको स्वास्थ्य समस्यालाई विशेष प्राथमिकता दिने ।

४.३.३ सुरक्षित सुईको प्रयोग तथा सुरक्षित यौन बारे जनचेतना जगाउने ।

४.३.४ महिला लागुऔषध प्रयोगकर्ताको जीविकोपार्जनको लागि विशेष कार्यक्रमहरू सञ्चालन गर्ने ।

४.३.५ महिला लागुऔषध प्रयोगकर्ताको परिवार तथा समुदायको सामाजिक पुनःस्थापनको लागि विशेष जोड दिने ।

**उद्देश्य ५- लागुऔषधको रोकथाम तथा नियन्त्रणसँग सरोकार राख्ने विभिन्न निकायहरु वीच आवश्यक सहकार्य गर्ने**

**<u>कार्यक्रम</u>**

***५.१. सहकार्यमा जोड दिने***

५.१.१ जोखिम तथा क्षति न्यूनीकरणका कार्यक्रमहरूमा प्रभावकारिता ल्याउन नीति निर्माता, कानून कार्यान्वयनमा संलग्न निकाय तथा समुदायमा रहेका नकारात्मक धारणालाई परिवर्तन गर्न चेतनामूलक कार्यक्रमहरू सञ्चालन गर्ने ।

५.१.२ जोखिम तथा क्षति न्यूनीकरण कार्यक्रमलाई विस्तार गरी लक्षित समूहको पहुँचलाई सुनिश्चित गर्न पूर्व लागुऔषध प्रयोगकर्ता, लागुऔषध प्रयोगकर्ता तथा सरोकारवालाहरूलाई कार्यक्रम तर्जुमा देखि नै सहभागी गराउने ।

५.१.३ आवश्यकताको आधारमा विभिन्न दातृ निकायहरूबाट प्राप्त प्राविधिक तथा वित्तीय सहयोगलाई परिचालन गर्ने । यस्ता कार्यक्रम

सञ्चालनको लागि आवश्यकता अनुसार विभिन्न प्राविधिक कार्य समूह (Technical Working Group) तथा अन्य कार्य दल (Task Force) समेतको व्यवस्था गर्ने ।

५.१.४ मानव श्रोत विकासका लागि सम्वन्धित सरकारी तथा गैरसरकारी संस्थाहरूसँगको सहकार्यमा जोड दिने ।

५.१.५ विकास तथा अनुसन्धानमा विभिन्न सरकारी तथा गैरसरकारी संस्था, समुदाय तथा शैक्षिक संस्थासँग सहकार्य गरी अघि बढ्ने ।

*५.२. लागुऔषध नियन्त्रण ब्यूरोको स्थापना गर्ने*

५.२.१ लागुऔषध नियन्त्रण ब्यूरोको स्थापना गर्न अवधारण पत्र तयार गर्ने ।

५.२.२ उक्त अवधारणा पत्रमाथि विभिन्न सरोकारवालासँग विचार विमर्श गरी प्राप्त सुझावका आधारमा लागुऔषध नियन्त्रण व्यूरो स्थापना गर्ने ।

५२.३ लागुऔषध नियन्त्रण ब्यूरोलाई श्रोत साधन सम्पन्न तुल्याउने ।

५.२.४ लागुऔषध नियन्त्रण ब्यूरोमा कार्यरत कर्मचारीको सेवा विशिष्टिकृत रुपमा सञ्चालन गरी उनीहरुको दक्षता अभिबृद्धि गर्न विशेष कार्यक्रम सञ्चालन गर्ने ।

*५.३. लागुऔषध नियन्त्रण कार्यक्रमको सुदृढीकरण तथा क्षमता अभिवृद्धि गर्ने*

५.३.१ मौजुदा लागुऔषध नियन्त्रण कार्यक्रमको बर्तमान संगठनात्मक संरचनाको आवश्यक अध्ययन र परामर्श गरी संगठनात्मक पुनःसंरचना गर्ने ।

५.३.२ कर्मचारीहरूको क्षमता अभिवृद्धिका लागि स्वदेश तथा विदेशमा आवश्यक तालिमको व्यवस्था मिलाउने ।

५.३.३ सरकारी तथा गैरसरकारी संस्थाद्वारा संचालित लागुऔषध नियन्त्रण कार्यक्रमको अनुगमन तथा मूल्याङ्कनको मापदण्ड तयार गरी अनुगमन तथा मूल्याङ्कन गर्ने ।

५.३.४ लागुऔषध कार्यक्रमसँग सम्वन्धित विभिन्न आधिकारिक सूचना तथा तथ्याङ्क संकलन गरी तथ्याङ्क संचय केन्द्र (म्बतब द्यबकभ द्यबलप० को स्थापना गर्ने ।

५.३.५ लागुऔषध नियन्त्रण कार्यक्रमलाई यस क्षेत्रमा कार्यरत सबै गैरसरकारी संस्था, सामुदायिक संघ संस्था र सरोकारवालाहरूको छाता संगठनको रूपमा विकास गर्ने ।

५.३.६ लागुऔषध नियन्त्रण कार्यक्रमले दातृ निकायहरूसँग समन्वय गरी लागुऔषध नियन्त्रण सम्बन्धी बिभिन्न कार्यक्रमहरु सञ्चालन गर्ने ।

५.३.७ सञ्चालित लागुऔषध नियन्त्रण कार्यक्रमको दिगोपनका लागि बास्केट फण्ड स्थापना गर्ने । सो फण्डमा सरकार तथा गैरसरकारी संस्थाहरुले रकम उपलव्ध गराउने ।

५.३.८ उक्त कोष सञ्चालनका लागि आवश्यक कार्यविधि र मापदण्ड तयार गर्ने ।

### ५.४ *अन्य निकायहरूसंगको सहकार्य*

५.४.१ नेपाल सरकारका केन्द्रीय स्तरका सरोकारवाला निकायहरु (जस्तैः राष्ट्रिय योजना आयोग, स्वास्थ्य तथा जनसंख्या मन्त्रालय, स्थानीय विकास मन्त्रालय, महिला बालबालिका तथा समाज कल्याण मन्त्रालय, शिक्षा मन्त्रालय, युवा तथा खेलकुद मन्त्रालय, अर्थ मन्त्रालय) सँगको सहकार्यमा सरकारी तथा गैरसरकारी क्षेत्रबाट सञ्चालित लागुऔषध सम्वन्धी विभिन्न कार्यक्रमहरूलाई एकीकृत रूपमा सञ्चालन गर्ने ।

५.४.२ केन्द्र तथा जिल्लास्तरमा अवस्थित स्थानीय निकाय तथा विभिन्न सरोकारवाला संस्था बीच आवश्यक समन्वय र सहकार्य गरी नियमित बैठक, छलफल तथा सूचना आदान प्रदान गरी सञ्चालित कार्यक्रमको मूल्याङ्कन गर्ने ।

५.४.३ स्वीकृत चिकित्सकको प्रेसकृप्सन विना अन्तर्राष्ट्रिय लागुऔषध नियन्त्रण बोर्ड (क्ष्ल्ऋद्य० बाट तोकिएका लागुऔषध (ल्बचअयतष्अ० तथा मनोद्दीपक (एकथअजयतचयउष्अ० समूहका औषधिहरु विक्री वितरण गर्न नदिन कानून कार्यान्वयन इकाईहरुको अनुगमन प्रभावकारी बनाउने ।

५.४.४ चुरोट, सुर्तीजन्य वस्तु तथा मदिरा बेचबिखनका लागि अनुमति पत्रको व्यवस्था गर्ने । अठार वर्ष भन्दा कम उमेरका व्यक्तिलाई यस्ता वस्तु बेचविखनमा रोक लगाउने ।

५.४.५ शिक्षा मन्त्रालय, पाठ्यक्रम विकास केन्द्र सँगको सहकार्यमा विद्यालय स्तरका पाठ्यक्रममा लागुऔषध सम्बन्धी विषयहरुलाई समाबेश गराउने ।

५.४.६ लागुऔषध नियन्त्रणको लागि यसको दुर्व्यसन र कारोवारमा संलग्न व्यक्तिलाई निरुत्साहित गर्न हवाई तथा स्थल नाकाहरुमा विशेष सावधानी अपनाईने ।

५.४.७ लागुऔषधको अवैध कारोवारबाट प्राप्त रकमको सम्भावित लगानीलाई निरुत्साहित गर्ने सम्बन्धी कानून कार्यान्वयनमा विशेष ध्यान दिइने ।

५.४.८ लागुऔषध नियन्त्रणको कार्यमा विशेष योगदान पु¥याउने गैर सरकारी संस्थाहरुलाई उनीहरुले उपचार तथा पुनर्स्थापनाको कार्यमा पु¥याएको योगदानको आधारमा आवश्यक प्रोत्साहन दिनेतर्फ विचार गरिनेछ ।

**उद्देश्य ६ लागुऔषधको समस्या वहु-आयामिक तथा वहुपक्षीय भएकोले यसमा नियमित अध्ययन अनुसन्धान गर्ने**

**कार्यक्रम**

६.१ लागुऔषध दुर्व्यसनको स्वरुप, प्रवृत्ति, व्यापकता, किसिम एवं संख्या तथा परिमाण आदिको तथ्यगत जानकारी प्राप्त गर्नका लागि आवधिक सर्वेक्षण तथा आधारभूत सर्वेक्षण गर्ने । यसको लागि सम्बन्धित विशेषज्ञको उपयोगलाई प्राथमिकता दिइने छ ।

६.२ लागुऔषध नियन्त्रणका लागि विश्वव्यापी रुपमा अंगिकार गरिएका विधि (Procedure) को अध्ययन गरी नेपालको सन्दर्भमा उपयुक्त हुन सक्ने विधिको प्रयोग गर्ने ।

६.३ लागुऔषध नियन्त्रण सम्बन्धी क्रियाकलापहरुको नियमित अनुगमन मूल्याङ्कन तथा पृष्ठपोषणको लागि नागरिक समाजको समेत प्रतिनिधित्व रहने गरी संयन्त्र (Mechanism) निर्माण गर्ने ।

६.४ लागुऔषध नियन्त्रण सम्बन्धी क्रियाकलापहरुबाट प्राप्त परिणामका बारेमा सामाजिक परीक्षण (Social Audit) को व्यवस्था मिलाईनेछ ।

## ७ विविध

### ७.१ रणनीति कार्यान्वयनको कार्य योजना

लागुऔषध नियन्त्रण सम्बन्धी रणनीतिको सफल कार्यान्वयनका लागि सम्बद्ध संघ संस्था/सरोकारवाला संस्था समेतसँग छलफल र अन्तरक्रिया गरी कार्य योजना तयार गरिनेछ ।

### ७.२ अनुगमन तथा मूल्याङ्कन

लागुऔषध नियन्त्रण रणनीति प्रभावकारी कार्यान्वयनको लागि आवश्यक अनुगमन तथा मूल्याङ्कनको व्यवस्था मिलाइने छ ।

### ७.३ मानव अधिकारको संरक्षण

यस रणनीतिले विश्वव्यापी मानव अधिकारका सर्वमान्य सिद्धान्तहरुलाई ध्यानमा राख्ने छ । विशेष गरी रणनीतिको कार्यान्वयन गर्दा मानव अधिकारका मूल्य र मान्यताप्रति आँच नपुऱ्याइने कुरामा विशेष सतर्कता अपनाइने छ ।